# लुभु खानेपानी तथा सरसफाई उपभोक्ता संस्था

## को

## दोस्रो साधारण सभाको उपलक्ष्यमा प्रकाशित



# खानेपानी तथा सरसफाई स्मारिका २०७५

२०७५ साल बैशाख २९ शनिबार

# लुभुया छम्ह नेवार

डा. नयनाथ पौड्ेल

संस्कृति, कला, वास्तुकला एवं व्यापार व्यवसायले विश्वमा आफ्नो देश नेपालको प्रसिद्धिलाई बढाउँदै आएको नेवार समुदाय प्राचीन कालदेखि नै नेपाल-उपत्यकामा बसो बास गरिआएका समुदायहरूमध्ये एक हो । नेवार शब्दले कुनै एक जातिलाई मात्र जनाउने होइन, यस शब्दले पूरै समुदायकै प्रतिनिधित्व हुने गर्दछ । विद्वान्ले देशको नाम नेपाल र समुदायको प्रतिनिधित्व गर्ने नेवार शब्दका बीचमा पनि घनिष्ठ रूपले अन्तरसम्बन्ध र हिआएको कुराको व्याख्या गरिरहेका छन् ।

यसरी नेपाल उपत्यकामा बसोबास गरिआएको समुदायलाई कहिलेदेखि 'नेवार' भन्न थालियो भन्ने कुरा इतिहास-संस्कृति विषयका विद्वान्हरूको लागि जिज्ञासाको विषय र हिआएको छ । यसैले नेपालका प्राचीन अभिलेखहरूमा 'नेवार' शब्दको उल्लेख कहिलेदेखि पाइन्छ भन्ने विषयमा यस छोटो लेखमा छलफल गर्ने प्रयास गरिएको छ ।

शिवराज शर्माले 'नि ऽ बालह' >'नि ऽ बाल'> 'नेवाल'> नेवार हुँदै नेवार शब्दको पूर्वरूप ऋग्वेदसम्म जोडिन पुगेको छ भनी उल्लेख गर्नुभएको छ१ । यस लेखको मनसाय अभिले खहरूमा नेवार शब्दको उल्लेख कहिलेदेखि पाइन्छ भन्ने विषयमा छलफल चलाउनु रहे कोले पूर्वरूपको विषयलाई अहिले यसमा समावेश गरिएको छैन ।

इतिहासज्ञशिरोमणि बाबुराम आचार्यले नेवार शब्दको प्राचीनताको विषयमा यस्तो ले ख्नुभएको छ -"अभाग्यवश, नेवार शब्दको पुरानो प्रयोग पाईंदैन । अठारौं शताब्दीमा ने पालमा आएका युरोपेलीहरूले लेखेका नेपालका वृत्तान्तमा यो शब्द पहिले प्रयोग भएको देखिन्छ ।"२

बाबुराम आचार्यले यसो भन्नुभए पनि यस अघिका पुराना ताडपत्र एवं अभिलेखहरूमा ने वार शब्दको उल्लेख भएको पाइन्छ ।
वि.स. २०३९ मा Mary Shepherd Slusser n] Nepal-Mandala- A Cultural Study of the Kathmandu Valley (नेपाल-मण्डल-काठमाण्डौं उपत्यकाको संस्कृतिको परिशीलन नामको ग्रन्थ दुई भागमा प्रकाशित भएको हो । धेरै परिश्रमपूर्वक लेखिएको यस ग्रन्थमा पुराना अभिलेखहरूमा नेवार शब्दको उल्लेख कहिलेदेखि पाइन्छ भन्ने विषयमा निम्न कुरा लेखिएको छ -

" In Nepalese inscriptions the name of Newar occurs for the first time in A.D. 1654 and 1667, a diarist mentions a Newar from Lubhu '.

मेरी स्लसरले यहाँ इ.सं. १६५४ को भनेको अभिलेख ने.सं. ७७४ माघ शुक्ल श्रीपञ्चमी शुक्रवारको १५ थरी लिपिमा पाषाणजलद्रोणीमा कुँदिएको राजा प्रताप मल्लको हो । यसमा गोलमोल आखर, पार्सि आखर, तिरहुति आखर, रंज आखर, माफ्रेपात आखर, देवनागर आखर, ऐंया उजेन आखर, गोत्रिया आखर, आर्व्वी आखर, कयथिनागर आखर, कूटाक्षर आखर, संया उमेत आखर, नेवार आखर, कास्मिरी आखर, एवं फिरिङ्गी आखर समेत १५ थरी अक्षर अर्थात लिपिको नाम उल्लेख गर्दा नेवारी अक्षरलाई जनाउन 'नेवार आखर' को प्रयोग गरिएको छ ।४ 'यही नेवार शब्द नै अभिलेखहरूमा पहिलो हो भन्ने स्लसरको विचार रहेको छ ।

मेरी स्लसरले ई.सं. १६६७ को भनेको अर्को अभिलेख ऐतिहासिक घटनावलीको हो । उतिखेरको घटनालाई टिपोट गर्ने क्रममा "ने.सं. ७८७ आषाढ कृष्ण प्रतिपदा लुभुया छह्म नेवार" भनी यसमा टिपिएको छ ।५ यसरी नेवार शब्दको प्राचीनताको विषयमा अनुसन्धान गर्दै जाँदा 'लुभुया छह्म नेवार' भन्ने पदावली महत्वपूर्ण कडीको रूपमा देखिन आएको छ । सयौं वर्षदेखि नेपाल उपत्यकामा बस्दै आइरहेका, कला-कौशलका धनी नेवार समुदायको नामको प्राचीनताको विषयमा खोजी गर्दै जाँदा लुभु शहरको नाम जोडिन आइपुग्नु निश्चय पनि यस क्षेत्रका निवासीहरूका लागि खुशीको कुरा हो । किनभने नेवार शब्दको प्राचीनताको विषयसँग लुभु शहरको नाम जोडिएर आएकोले यस शब्दको अध्ययन-अनुसन्धान गर्ने जो-कोहीले पनि लुभु शहरको नाम लिनै पर्ने हुन्छ । यसै ले नेवार शब्दको इतिहास भन्यो कि लुभुको नाम स्वतः आइहाल्छ । यो कुरा यस क्षेत्रका निवासीहरूको लागि पनि गौरवको विषय हुन आउँछ ।
अर्का विद्वान् David Gellner ले ऐतिहासिक घटनावलीमा उल्लिखित "सकलेङ नेवालं नेवाल हेला" भन्ने टिपोटमा आएको 'नेवाल' लाई नेवार शब्दको पहिलो उल्लेख हो भनी लेख्नुभएको छ ।६ परन्तु तल प्रकाशित तालिकामा देखाइएको समय-क्रमअनुसार यसभन्दा अगाडिका अभिलेखहरूमा नै नेवार शब्दको उल्लेख आइसकेको पाइन्छ ।

इतिहासकार डा. महेशराज पन्तले "ने.सं. ७७२ भाद्र "नेवारभाषा तया" भन्ने उल्लेख भएको मोहन चोकको दलानको राजा प्रताप मल्लको अभिलेखमा कुँदिएको नेवार शब्दलाई पहिलो उल्लेख मान्नुभएको छ ।७ परन्तु यसभन्दा ३० वर्ष अगाडिको ताडपत्रमा नेवा शब्दको उल्लेख आइसकेको पाइन्छ ।

अहिलेसम्मको अन्वेषणको क्रममा ने.सं. ७४२ (वि.सं.१६७९) को "चैत्रकार विभु नेवा प्रमान" पदावलीमा उल्लिखित नेवा शब्द नै नेवार शब्दको पूर्वरूपको पहिलो उल्लेख

भएको देखिन्छ । कान्तिपुर निवासी चित्रकार परिवारले अंश भागबण्डा गरी लिखतके रूपमा तयार पारिएको उक्त ताडपत्रमा "सम्वत् ७४२ भाद्र पद शुद्धिदृष्ट साक्षि धारनय स्वगोत्र भ्राता चेत्रकार विभु नेवान प्रमान शुभ ॥" भनी लेखिएको पाइएको छ ।८ 'नेवा नेवार शब्दकै 'र' उच्चारण नगरिएको छोटकरी लेखाइ हो ।

अहिलेसम्मको खोजी अनुसार अभिलेखहरूमा नेवार शब्दको उल्लेख भईआएको समयक्रम लाई तालिकामा यसरी प्रस्तुत गर्न सकिन्छ ।

| सि.न. | क्रम | पदावली | संवत् | अभिलेख/स्रोत | प्रकाशन-स्रोत |
|---|---|---|---|---|---|
| १ | पहिलो उल्लेख | चैत्रकार विभु नेवा | सं ७४२ भाद्रपद शुद्धि (वि.सं १६७९) | अंशबण्डा गरी लिखत गरिएको ताडपत्र | भूमि–सम्बन्धी तमसुक ताडपत्र भाग २, पृ २३ |
| २ | दोस्रो उल्लेख | नेवार भाषा तया | ने.सं ७७२ भाद्र (वि.सं १७०९) | हनूमानढोका दरबार, मोहन चोकको राजा प्रताप मल्लको अभिलेख | हनूमान्ढोका राज दरबार पृ.२०८ |
| ३ | तेस्रो उल्लेख | नेवार आखर | ने.सं ७७४ माघ (वि.सं १७१०) | राजा प्रताप मल्ले १५ थरी लिपिमा कुँदाएर राखेको पाषाणको जलद्रोणी | हनूमान् ढोका राज दरबार पृ.२११ |
| ४ | चौथो उल्लेख | लुभुया छह्म नेवार | ने.सं ७८७ आषाढ (वि.सं १७२४) | ऐतिहासिक घटनाको टिपोट | ऐतिहासिक घटनावली पृ.३ |
| ५ | पाँचौं उल्लेख | सकलेङ नेवालं नेवाल | सं ८०४ श्रावण (वि.सं १७४१) | ऐतिहासिक घटनाको टिपोट | ऐतिहासिक घटनावली पृ.२३ |
| ६ | छैठौं उल्लेख | ब्राह्मण खसँ निवारं सतच्छि मयाक | सं ८२६ कार्त्तिक (वि.सं १७६२) | ऐतिहासिक घटनाको टिपोट | पूर्णिमा पूर्णाङ्क १२ म प्रकाशित ठ्यासफु पृ |
| ७ | सातौं उल्लेख | खसह्म ५ नेवार ह्म १ जोडाव कुन | सं ८५७ पौष (वि.सं १७९३) | ऐतिहासिक घटनाको टिपोट | पूर्णिमा पूर्णाङ्क १३८ मा प्रकाशित ठ्यासफु पृ. १५८ |

यसरी हालसम्मको अन्वेषणबाट अभिलेखहरूमा नेवार शब्दको उल्लेख आएके समयक्रम माथि तालिकामा लेखिएबमोजिम रहेको देखिन्छ । विद्वान्हरूले यस विषयम अझ बढी परिश्रमपूर्वक अन्वेषण एवम् अनुसन्धान गरी यस क्रमलाई अझ अगाडि बढाउँदै लैजानुपर्ने आवश्यकता देखिएको छ ।

यसरी हालसम्मको अन्वेषणबाट अभिलेखहरूमा नेवार शब्दको उल्लेख आएको समयक्रम माथि तालिकामा लेखिएबमोजिम रहेको देखिन्छ । विद्वान्हरूले यस विषयमा अझ बढी परिश्रमपूर्वक अन्वेषण एवम् अनुसन्धान गरी यस क्रमलाई अझ अगाडि बढाउँदै लैजानुपर्ने आवश्यकता देखिएको छ ।

१. शिवराज शर्मा, नेपाल र नेवाल - मूलत : ऋग्वैदिक शब्द दार्जीलिङ : गोर्खा पुस्तक सदन, २०५४, पृ.८.
२. बाबुराम आचार्य, "नेपाल, नेवार र नेवारी भाषा" नेपाली सांस्कृतिक परिषद् पत्रिका (2009) वर्ष १ अंक १ पृ.२.
३. Mary S. Slusser, Nepal-Mandala- A Cultural Study of the Kathmandu Valley, New Jersey : Princeton University press, 1982 ,p.
४. गौतमवज्र वज्राचार्य, हनूमान्ढोका राजदरबार, काठमाडौं: नेपाल र एशियाली अध्ययन संस्थान, त्रि.वि., २०३३, पृ.२११.
५. शङ्करमान राजवंशी, ऐतिहासिक घटनावली, काठमाडौं: वीर पुस्तकालय, २०२०, पृ.३.
६. ३६ ग्रुप युवा क्लब हरिसिद्धि युवा क्लबबाट प्रकाशित, केदार मर्हजनद्वारा सम्पादित दबू स्मारिकामा छापिएको David Gellne sf] Some notes on Newar Identity भन्ने लेखको पृ.६०.
७. महेशराज पन्त,"नयाँ थ्यासफु" पूर्णिमा पूर्णाङ्क १३८, संशोधन मण्डल, (२०६९), पृ.१५३.
८. शङ्करमान राजवंशी, भूमिसम्बन्धी तमसूक ताडपत्र भाग २, काठमाडौं : राष्ट्रिय अभिलेखालय, २०४१, पृ.२३.

शौचालयको दिसा बोकेर लगिदै महिला

खाल्टे शौचालयको नमुना